# आमाका आँसु

कविता-संग्रह

प्रकाशक—
श्याम शोभा पुस्तकालय।
गुल्मी खिदि अ...

मूल्य पचास पैसा



मै दुनाकेश्रेत

# यस संग्रहको बारेमा—

(डा० गोविन्द सुवेदी—सर्वदर्शनाचार्य, साहित्याचार्य, व्याकरणाचार्य, आयुर्वेद विज्ञानाचार्य, भिषगाचार्य, वैद्यरत्न, साहित्य रत्न, वेदान्त शास्त्री, एम. ए., एम. ए. एम. एस., एच. एम. डी., पी. एच. डी. (द्वि. व.) महोदय को शुभ कामना—

'आश्रित' जी को 'आमाका आँसु' (कविता संग्रह) आद्योपान्त हेरें, वहाँको यो प्राथमिक मौलिकप्रयास होतापनि यसको प्रौढता कविताबाट नै स्वयमेव प्रकट भएको छ। वहाँको विचार धारा आधुनिक विचार धारा मा प्रवाहित भएको पनि छिपेको छैन, जोहोस् सिद्धान्तमा मतभेद हुनु स्वाभाविकै होता पनि वहाँको यो प्राथमिक प्रयास अतीव् प्रशंसनीय छ। आशा गर्दछु वहाँले आफ्नो यस आदतलाइ बढाउँदै लगी देशको साहित्य भण्डारको कमीलाई हटाउने कार्यमा मद्दत दिंदै जानु हुने छ।

गोविन्द सुवेदी
प्राध्यापक–नेपाली विभाग,
वाराणसेय संस्कृत विश्वविद्यालय
वाराणसी।
१-१२-६२

# कवि-'प्रश्रित' संक्षिप्त परिचय

हरिप्रसाद काश्यप–

जहिले हेर्दापनि एक न एक काम समातेको, अल्छीको नामनमुनेको, देख्दाभने झुत्रेझाम्रे सर काम देख्दा औतारी लाग्ने पुड्के, मोटो, हँसिलो, ख देखेपछि मोहित पार्ने, ठिटो हो कवि 'प्रश्रित'।

देख्दै आश्चर्य लाग्छ, सबै भन्छन् "विधाताले सबै गुण एकैठाउँ जुटाउन्न" तर 'प्रश्रित' को जीवन हेर्दा ब्रह्मापनि भुले जस्तो लाग्दछ, जीवनोपयोगी कुनकाम भनौं ? जोकि 'प्रश्रित' गर्न नसकोस्। सबैकाम अधूरा होइन 'कुँदेको सङ्गमर्मर जस्ता'। कविता लेख्दछ त 'राइटर' को कलमलाई उछिन्छ, चित्र लेख्दछ त भौंरा भुलाउँछ, कपड़ा सिलाउँ छत सुजीलाई खिज्याउँछ, साइनवोर्ड बनाउँछ त आर्ट-गुरु बन्दछ, माटाका मूर्ति बनाउँदा-बोल्नमात्र बाँकीराख्दछ, सानोभन्दा सानो पुस्तकको जिल्द हाल्ने कामदेखि लिएर, उच्च साहित्यनिर्माण आयुर्वेदाध्ययन, सामाजिक विषमता मेटाउने कल्पना संमका विषय 'प्रश्रित' का सहगामी हुन्। प्रतिभा भएपछि सङ्गत-फङ्गत केही चाहिंदो रहेनछ, 'प्रश्रित' को खास त्यस्ता प्रभावोत्पादक संपर्क कुनै थिएन तै पनि उसले अक्षर चिन्हेदेखिनै कविता कोर्न थाल्यो यत्रा विषय साथै अँगाल्नूको अलावा वाराणसेय संस्कृत विश्वविद्यालय को सन् ६२ को 'मध्यमा' मा 'सर्व प्रथम' हुनु 'प्रश्रित' को अलौकिकता हो।

'प्रश्रित' को कविता सिद्धान्तले नेपाललाइ उज्यालो फार्ने चेष्टा गर्दछ, त म 'प्रश्रित' लाइ नै नेपालको सूर्य अठ्याट गरेकोछु।

वाराणसी।

५-१२-१९६२

★

इर्सबोट ग्राममधिवसति स्वस्य पूर्वाभिजातम् ।
तत्सान्निध्ये हरिहरमठे कौमुदीं चाधियन् यः ॥
आबाल्यात्सूक्ष्म नयनतया ग्रन्थमालोच्य नित्यम् ।
काव्याम्बोधौ ब्रुडति सहसा मोदते मोदनाथः ॥

- पं० टीकाराम शास्त्री,–

नव्य व्याकरणाचार्यः ।

आमाका आँसुलेझैं हृदयविचमा प्रेरणा झट्ट ल्याई,
चाहे कस्तै कुरामा कठिन पनि होस् कार्य त्यो गर्नलाई ।
बाली उत्साहज्वाला हर-तरहको कामना पूर्ण गर्ने,
शक्तिको पुञ्ज यो हो मन-मन पसी भावलाई उघार्ने ।

गोविन्द राज ज्ञवाली

## मेरो.... !

मनमा उठेका भावना संभाल्न न सकेर कागज मा थुपार्नमानवले आदिकाल देखिनै सुरु गरेको होला, त्यस्तैमा 'म' पनि सामाजिक विषमता बाट छुटेका आमाका आँसुले प्रेरित भएर भावना थुपार्न थालें, तीयिनै हुन् 'आमाका आँसु ।'

मेरा मनमा खुसिका कुरा उठेका भए तपाइंको अगाडी हँसीलो मुख लगाएर आउने थिएँ, तर परिस्थितिले भनौं ? या केलें भनौं ? यस्तै भयो, तपाइंको मनलाइ संतुष्ट र सामाजिक प्रतिनिधित्व गर्न यी टुक्राटा क्रीले सकुन् या न सकुन् तर यिनी रोई रहेकी आमाका टल्पल-टल्पल गर्दा आँसु अवश्य हुन् ।

यिनले तपाईलाइ आमाको हेरचाह गर्ने प्रेरणा संम दिए भने मैले खोजेको पुग्यो ।

—'प्रश्रित'

★ २०१६ मार्गशीर्ष

# आमाका आँसु !

( मालिनी छन्दमा )

अझपनि किनछोरा ! पाठशाला गएनौ ?
किन नरजुनि जस्तो यो महत्ता बुझेनौ ?
यति असल उज्यालो रत्नलाई गुमाई ।
किन घुमि घुमि काँढ़ा दुःखदायी बटुल्छौ ?

कतिकति दुखपाई भाइ रोई रहेछन् ।
जिनतिन मुखहातै जोड्न केही नपाई ।
तर तिमि धनमित्रै पौडिखेली बसेर ।
शिव ! कसरि अझै हा ! चित्तथामी रहेछौ ?

घर घर मन गर्छन् भाइले पढ्न लाई ।
तर नछ संग पैसा पुस्तकै किन्न लाई ॥
तरररर आँसू जिन्दगीको छ साथी ।
अझ पनि किन पापी ! भाइको दुःख हेर्छौ ?

मतहुँ सबकि आमा भै सकें वृद्ध हेर ।
कति दुख संग पालें कष्ट नाना सहेर ॥
मनुज सकल मेरा पुत्र नै हौ समान ।
तर किन तिमि यस्तो भेद लिन्छौ महान ?

कति जन धनपाई स्वार्थले गंकिएर ।
घुमि-घुमि मनमौजी गर्दछौ मात्तिएर ॥
तर शिव ! शिव ! भाइ तड्पड़ाई रहेछ ।
किन निठुर उलाई फर्कदै हेर्दैनौ ? ॥

सकल बिच समान प्रेमको भाव राखी।
हर तरह बचाई इज्जतै राखि राखें॥
सब सुतकन एकै दूध आफ्नो पिलाएँ।
तर कसरि ममाथि हूँ ठुलो भन्न लाग्यौ ?

न त तिमि पढि आफ्नो मान केही बढ़ायौ।
न त उकन पढाई उच्च आदर्श राख्यौ॥
हरदिन किन छोटो चित्त पारेर छोरा !
'धन ! धन !' भनि व्यर्थै पागलै भै रहेछौ ? ॥

कति असल दिदीका पुत्रले चन्द्र ताके।
तर खल तिमिहेरू व्यर्थ बाझी रहेछौ॥
'नर' सरि किन आफ्नो जातलाई चिन्हेनौ ?।
पशु सरह पनी हा ! प्रेम राख्नै सकेनौ॥

अरु धनि र पढेका प्रेमले काम गर्छन्।
तर तिमि दुइनैछौ मत्त साँढ़े बनेका॥
तिमिहरुत-लड़ाई गर्दछौ तुल्यमा नै।
तर अरु सब सानालाइ कुल्चेर मार्छौ॥

यस तरह बढेको पुत्रको द्वेषबाट।
सहन पनि नसक्ने छातिमा गड्छ काँढो॥
वरपर नदिनालाबाट आँसू बगाई।
म त दिन-दिन रुन्छु ख्याल नै राखदैनौ॥

प्रिय सुत ! म छु वृद्धा केश-पाक्यो हिमाल।
वन नग बनि छाला खुंचियो यो छ चाल॥
अब झटपट छोड़ी व्यर्थको यो लड़ाई।
पढ़ ! पढ़ ! यहि मेरो प्रार्थना मानिलेओ॥

---

# हिउँचुली !

क सुस्वादु सुधाहरू लिई, ब्रह्माण्डको शान समानको भई ।
ड़ वर्षौं तक हेर निर्भय, खड़ा अगाड़ी छ सखे ! हिमालय ।
हरूको सब रोग खण्डन, गर्ने जगन्नाथकको हुँदा मन ।
कि यो सार्थक औषधालय ? खड़ा अगाडीछ सखे ! हिमालय ॥
दिने दूध समानको जल, अड़ाइ छोरा हरूकाखमा तल ।
मा सरी साथछ प्रेमको भल, खड़ा अगाड़ी छ सखे ! हिमाचल ॥
तू उठ्योलौ यतिबेर संमन, कस्ता यिनीछात्र ? सुती रहेछन ।
गुरूतुल्य विहान उज्वल, खड़ा अगाडी छ सखे ! हिमाचल ॥
मिठो सुन्दर प्रातकालको चिट्ठी दिने शीतल मन्दवायुको ।
र यो मित्र समान निश्छल, खड़ा अगाड़ी छ सखे ! हिमाचल ॥
र कस्तूरि पयोधरादिमा, राम्रो पछ्यौरा छ पयोधरादिको ।
की रहेका नदि केशझैं तल, खड़ा छ यो सुन्दरि झैं हिमाचल ॥
ढेर बल्मीक समानको हिम, बसी युगौं संम भनेर शङ्कर ।
ी कड़ा घाम झरी र बादल, खड़ा मुनी तुल्य छ यो हिमाचल ॥
ी खरानी बनदो दिगंबर, लिएर भिक्षासरि रास रत्नको ।
इ गाँजा सरि फुर्र बादल, खडाछ जोगी सरि यो हिमाचल ॥
ाइ श्रीपेच झलक्क रत्नको, उमाथि गोपुच्छ अनेक चामर ।
ी परी भृत्य प्रजा यि पर्वत, खड़ा छ राजा सरियो हिमाचल ॥
कू न आउन् 'नेपाल' राष्ट्रमा, रहोस् अतन्तै तक यो सुरक्षित ।
ी लियी लष्ठि बसी रहेछयो, नेपाल सीमा पहरे हिमाचल ॥
एर आकर्षणशक्ति हातमा, धारोसरी सुन्दरता हरूभरी ।
छा सरीका कविहेरूको दल, कुमालझैं तान्दछ यो हिमाचल ॥

नेपाल यो सुन्दर पुष्पवाटिका, फुली रहेका ऋतुहेरुका।
भौंरा सरीभैं कवि डुल्दछन् जहाँ, खुसाल हो सुन्दर यो हिमा
जंकेछ मेरो फुलवारि यो भनी, गर्दो अझै सेचन शीतपा
आशालिंदो लौ अब फल्दछन् फल, माली सरी हाँस्दछ यो हिम

---

## सूर्यलाइ हेरत !

आकाशमा हेरत भट्ट साथी !
भल्केर दौड़न्छ सदैव माथी ॥
खानू पिनू आदि सबै त्यजेर ।
निरकन्छ जो काम सको सबेर ॥

सारा प्रजालाइ जगाउँदोछ,
सत्कार्यको मार्ग दिलाउँदोछ ।
त्यस्लाइ नाफा नकुनै रहे छ ?
सर्वस्व त्यागेर घुमी रहेछ ॥

निमेष खाली नगरेर बीर,
दौड़ी रहेकोछ बनेर धीर ।
त्यसको वुभयौ कारण केछ सानी !
परोपकारी उसको छ बानी ॥

शिक्षा यही सूर्य सदैव दिन्छ,
'आलस्यको मूल निमोठि फाल,
छ शास्त्रको सार परोपकार,
यो चित्तको भित्रलगी घुसार ॥'

# आर्त्त द्रौपदी

...य, रमापते ! सुखद हे हरे ! स्मृति उड़ी गयो दुःखमा परें ।
...रु कुनै पनी दुःखनाशक, प्रभुविना कुनै छैन, पालक ॥
...प्र सब दुष्टका हातमा परी, प्रभु ! सरं गयो, केगरूँ हरि !
...ति हरू सबै साथछन् तर, वचनवाध्यछन् दुःख निर्भर ॥
...व पराक्रमै व्यर्थभो प्रभो ! तिति समर्थ छौ दुःखमा विभो !
...हरु त पाँचनै वीर वीर छन्, सकल नष्टभो हाय ! के गरुन् ?
...भु ! कसोगरूँ ? कष्टमा परें । हत ! अभागिनी होछु हेहरे !
...अखिल राज्यको नाशभै गयो, अनि मलाइनै हारि वक्सियो ॥
... त रजस्वला प्राप्तपो थिएँ, यि खल हेरुका हातमा परें ।
...जनपदै भरें आर्त्तनादले, तर सुनेन हा ! तुच्छभाग्यले ॥
अनि घिसारँदै दूतले लग्यो, अनि त दुष्टले हातमा लियो ।
अब तँ दासि होस् भन्छ यो प्रभो ! तर पनि प्रभो छाति थाम्यियो ॥
वरिपरी ठुला गण्यमान्य छन्, स्वसुर ज्येष्ठछन् नाथ हेरु भन् ।
गुरु हरू सबै छन् यि सामिल, गरुकसो ? प्रभो ! दुःखि भोदिल ॥
अब त धोति नै खोस्नमा सुर ! लिनगयो प्रभो ! हाय निष्ठुर ।
उधुम भो अहा ! हाय मालिक ! हुनगयो हरे ! मर्नुनै ठिक ॥
मरूँ भने पनो केगरी मरूँ ? अब कसोगरूँ ? हाय केगरूँ ?
पति हरू सबै निम्न दृष्टि छन्, यि यम दूतले धोति खोल्दछन् ॥
नरकमा बरू दुःख भोगुली, कित हरे ! पछी छाति काटुली ।
असह कष्टमें, आज भूधर ! यस सरी अरू दुःख के छर ?
वरु छिटो प्रभो! प्राण मासियोस् ,कित हरे! हरे ! लाज नासियोस् !
गज र ग्राहको युद्धमा पनि दुख छुटाइयो प्रार्थना सुनी ॥

प्रिय ! उसै गरी दृष्टि लाउनोस् ! अब प्रभो ! यहाँ झट्ट आंउ
प्रभु विना मता निस्सहाय छु, असुर शत्रु हे ! पाउ प
सकल अङ्गनै आँसुले भिज्यो, मुद्धकमा प्रभो ! ग्रन्थि बाँ
अझ यि हाँस्दछन् तालि मारँदै, दुखि अभागिनी लाइ हे
कित छिटो प्रभो! शस्त्र वृष्टि होस् , कित हरे ! मभा एक दृष्टि
रति म बज्रको दुःख मान्दिन, यम पुरी पनी दुःखि ठानि
न त समर्थ छु भाग्नमा पनि, न छ गती हरे ! व्योममा
अझ छु वस्त्रको पाशमा हरे ! यि खल हेरूले हासनै
अब त हे हरे ! पार लाउनोस् मतहुँ भक्तिनी जौन अ
प्रभु विना अरू छैन क्यै गति, गरु कसो हरे ! हे जगत

× × ×

सुनि दयामयी बोलि, पाल्नुभो ! कहिं रमापती गुप्त वस्
जतिजती थुत्यो वस्त्र दुष्टले, उति दिनूभयो धोति कृष्ण
कति थुती थुती राश पार्दियो, तर पनी अझै पूर्वझैं र
सकल छक् परे हर्नुभो दुख, अनि त दुष्टको भो अधोमु

———

# किन सम्झन्थिस् ?

जबतक जगको रङ्गमञ्चमा इष्टमित्रको खेला छ ।
धन-धन्दा-उद्योग-कलाहरु वर्सिरहेको वेला छ ॥
शोक-अग्निमा जलको-सेचन गर्ने जनको भेला छ ।
वरिपरि हर्दम कोकिलकण्ठी-युवति हरुको मेला छ ॥

जबतक पहिले सञ्चित-बलको शक्ति छ आफ्नो-हातैमा ।
करमा-शस्त्रछ तनमा वस्त्रछ भोग सबैछन् साथैमा ॥
दुःख-दर्दको नाम न सुन्ने मनपनि आफ्नो थातैमा ।
सुरा सुन्दरी-सिगरेट र सत्ता चलीरहेको रातैमा ॥

प्रकृति पुरुषको सङ्गत जस्तो जोकरको अभ्यहात छँदैछ ।
'मुखले लौलौ मनले धौधौ', साथी हरुको साथ छँदैछ ॥
कालकूटका माथि बसेका दूधसरीको हास्य छँदैछ ।
झुँवरि अघीका शीतवायु झैं हृदयाऽह्लादक प्रेम छँदैछ ॥

हातभित्रका मौरि सरीको गुन गुन गर्ने गाना छ ।
पात पतिङ्गर उड़ेर जाँदा अड़ी रहेको छाना छ ॥
माछो छोप्ने अङ्कुर वेष्टित मासुसरीको खाना छ ।
भोलीलाई रात देखने केवल नेत्र निशाना छ ॥

रसियाको स्पुटनिक जस्तो उड़ी रहेको धोकोछ ।
किन संझन्थिस् तलबाटामा रोइ रहेको भोकोछ ?

———

# अन्तिम शिक्षा !

(शार्दूल विक्रीडित छन्दमा)

ठूलो बाढ़थियो अनेक लहरी उर्लीरहेका थिए।
चारै तर्फ बतासको गति थियो भानू लुकेका थिए॥
यात्रीहरु मजालिने निहुँ गरी आए बगैंचा तिर।
साम्ने एक थियो अगम्य जलको राशी बगैंचै निर॥

( १ )

कैयौं पौडनमा सिपालु जनता बाल्लै परेका थिए।
आँसू थाम्न भएर मुस्किल कती रोई रहेका थिए॥
छोटो जीवनको विचित्र घटना बोली रहेको थियो।
त्यो वेला मनमा झसङ्ग न हुने ढुङ्गो पनी के थियो ?॥

( २ )

यस्तै चाल हुनेछ आखिर भनी हामी भनेका थियौं।
'घोप्टो लास थियो तरंगबिचमा' आँखा उघारी लियौं॥
यो पापी भवलाइ हेर्दिनँ भनी चिलेर आँखाकन।
व्यथैंको भव दुःख छोड्न मनभै छोड्छ श्वासै लिन॥

( ३ )

देखी मानवको घमण्ड उसको छाती फुटेको थियो।
भूटो बोल्दछुकी भनेर उ त्यहाँ मौनी बनेको थियो॥
सेतो देहथियो गलेर मुखमा कालो अँध्यारो थियो !
मानों-जीवनको लघुत्व सबमा शिक्षा दिएको थियो॥

---

## मानवताको पुकार !

( गद्य-कविता )

बा ! बा ! भोक लाग्यो भन्दा बरु !
ढुंगा कोचारीदेउ मेरो मुखमा ॥
बरु मुसको तुसले कक्किएको वेला ।
मलाइ पल्टाइ देउ हिंउको खाड्लमा ॥
बरु तिर्खाले तड्पेको वेला—
तातो-तेल हालीदेउ मेरो मुखमा ।
बरु आपत्-विपत्को चिर्को पर्दा ॥
बञ्जराको पाशो फुटाऊ मेरो थाप्लोमा ।
अझ मान्दैनौ भने—

भयङ्कर अजिङ्गरको मुखमा
जीवन बिताउने मौका मिलाइ देऊ !

अझ नपुगे—

जन्मभूमि देखी लघार !
संसार देखी लघार !
भाला रोपेर मार !
तर, मानव ! मेरो प्रार्थना छ !
तिम्रो भलाईको लागि !
तिम्रो भविष्य रक्षाको लागि ।
"मेरो धर्मले देखेको सही कुरा सबको अगाड़ी—
बिना रोकतोक पोख्न देऊ !"

———

# कुमाल

अल्छी छोड़ी उठी विहानै साथी, कलम र कापि, मसी।
विषय वस्तुको भावछ माटो उमङ्ग खनिता भित्र धसी॥
निकालि छान्यो तुलना गर्ने 'विचार' मसिनो चलनीमा।
स्नेह छर्‍यो जल, मुछ्यो मर्जाले हृदय भित्रको धरणीमा॥
मनको चञ्चल चक्कामाथी अनेक तहका गोल बनायो।
भावुक लौह्रो घुसारि त्यसमा वसेर छिउँमा गुँय्यँ घुमायो॥
सूक्ष्म-दृष्टिको कर्द लगाई भद्दा काटीँ सम्म बनायो।
काल चक्रझैं चक्का घुंदा लघु-जीवनको ज्ञान कुमाल्ने॥
निकालि पाखा तर्क-शक्तिले सानालाइ हुस्स फुलाई।
अलङ्कार औ उषालालिमा रसमा घोटी पालिस लाई॥
आलोचनको अग्निशिखामा काव्य-घड़ाको ढेर लगाई।
पोल्दा कैयौं फुटे फटाफट बाँकी थोरै रह्यो कमाई॥
महिनौ धसियो कहिले विचरा राम्रो कपड़ा लाएन।
तीज, दशैं तेवार गए कति पेट भरी पनि खाएन॥
केटाकेटी-हरू रुँदामा दुःख पर्‍यो अनि घड़ा बनायो।
बाबु-जिजूको कामै त्यस्तै पेसा थाम्ने काम समायो॥
जन्मे-देखि काम सिक्यो यहि बस्यो यसैमा अभ्यास।
जीवनको यहि भयो तपस्या घैंटाहरुकै सहवास॥
काव्य-घड़ाको बोको भारी वेच्न घुम्यो सब-संसार।
समाज-अन्धा किम्मत उसको नसम्झि बोल्यो बेकार॥
"तेरो घैंटो माटो नै हो सिन्कि-पिठाम्रा दिने भए।
निकाल ! नभए चाँड़ो लैजा ! आए यस्ता कती गए॥
तै पनि सुखमा चन्द्र उदायो निकालि बेच्यो खुसी बनी।
गरीबले पनि तिर्खा मेट्यो कति सजिलैमा मस्त बनी॥

———

# कर्त्तव्य गर्दै गर

(शार्दूल विक्रीडित छन्दमा)

चारोटै पुरुषार्थ साधन बन्यो यो मानवी जीवन।
अप्ठारा सबछन् परिश्रम विना पाइन्न कोही लिन॥
जन्मेदेखि लिएर जीवन भरी सोझै दगुर्दै ध्येय–
मात्रै मिल्दछ लक्ष्य नत्र त यसै यो जिन्दगी बिग्रिए॥

बाटो किन्तु अनेक कण्टक हुँदा गाह्रो उकालो छ यो!
कैयौं मर्द हिंड्दे परन्तु यसले च्वाट्टै थकाई दियो॥
धेरै यत्न हुँदा हुँदै पनि कती हाला हुँदैछन् तर।
ए बाबू! तिमिले अचम्म नपरी कर्त्तव्य गर्दै गर॥

मान्छेकै सँगमा ठुला दुःख हरू पर्छन् त पर्दै रहुन्।
साह्रो पर्वत झैं सदा बनि रहे लत्रेर पर्ला हिँडुन्॥
साह्रै खप्पिसझैं सदैव हिउको भारी उठाई लिंदा।
कस्तो मान्य 'हिमाल' आज छ सदा चाँदी सरी देखिंदा॥

कैयौं दुःखहरू परे तर सहे राजा हरिश्चन्द्रले।
राज्यै छोडि हिंडेर दुष्ट कतिका! मार्नू भयो रामले॥
गान्धीले कति जेलनेल सहँदै लुक्का धपाई दिए।
लाखौं कष्ट सहेर मात्र सबले कर्त्तव्य पूरा गरे॥

खोजे देश अनेक, हेर! कतिले त्यागेर नै जीवन।
कोही वीर हिमालमा पनि चढे शूरो गराई मन॥
कैयौं मर्द पुगी सरु उडि-उडी त्यो चन्द्रको लोकमा।
आफै आउँछ हाँसदै सफलता कर्त्तव्यको साथमा॥

'होला ! हुन्नकि ?' थो नलेउ मनमा 'यो हुन्छनै निश्चय, ।
भन्ने गर्व लिई परिश्रम गरे बन्नेछ त्यो निर्भय ॥
एकै डेग कदापि धर्मर नभै जोटिक्छ कर्त्तव्यमा ।
दौड़ी आउँछ भाग्य जे जति सदा खोज्यो उही हातमा ॥
नुसाना ! तिमि बन्दछौ पछि ठुला संसारका मालिक ।
आफ्ना उच्च विचारबाट गढ़िला सिद्धान्त राम्रासिक ॥
बाबू पीठ नदेउ ! हेर कहिले त्यो उच्च कर्त्तव्यमा ।
चंकौला तबमात्र निश्चय तिमी तारो बनी विश्वमा ॥

---

# के आयो ?

दसैं आयो ! तेवार आयो !
पापा खाउँला, टीका लाउँला ?
तीज आयो ! फागु आयो !
चाचा लाउँला, रङ्ग उड़ाउँला !
अर्को दसैं सम्मत जसरी पनि
एउटा कोट हाल्लुँला !
कठै ! कति आए ? कति गए ?
दसैं आयो दाँत आयो !
तेवार आयो जुँगा पलायो !
फागु आयो दारी लिएर—
रामनवमीमा फुल्दै थियो !
अक्षयतृतीयामा सेतै !
तीज सम्म एकभक्त मनाउँदै थियो—
दसहरोमा छाला खुंचियो,
संकष्ट चतुर्थीमा दाँत गिऱ्यो
काल-रात्रि आउँदा थला टेक्यो ।
कालाष्टमीका दिन जिभ्रो टोक्यो
के आयो ? के गयो ?
"दसैं आयो पापा खाउँला"

———

# देशकालागी

( प्रचलित भयाउरे लयमा )

लड़ौंला देशकालागी मरौंला देशैमा हाँसेर !
हृदयमा धिपि-धिपि सास रहे सम्म ।
नमरेर बाँचौं भन्ने आश रहे सम्म ॥
प्राणरम्म धान्नलाइ गासमिले सम्म ।
एक बिन्दु रक्त पनि पास रहे सम्म ॥ लड़ौंला...
आफन्तिमा मर्का पर्ला भन्न न लागेर ।
भोग-तृष्णा आदिलाइ चट्ट उँ लेर ॥
परन्तुमा स्वार्थबनोस् भन्ने न सोचेर ।
क्रान्तिकारी गीत-गाउँदै धक फुकाएर ॥ लड़ौंला...
प्राण चाहे एकै पलमा शरीरलाइ छाड़ोस् ।
जन्मभरी जेलभित्र चाहे बस्नु परोस् ॥
पागल ! भनी जनताले चाहे खिसी गरोस् ।
भोक-भोकै चाहे देश,-देश घुंनु परोस् ॥ लड़ौंला...
हाम्रो कुरा कस्ले सुन्ने भन्ने कुरै छैन ।
'हामीबाट साध्य नहोस् !' काम कुनै छैन ।
मानवको मानवतालाई छोड़िंदैन ।
यमराज आए पनि हामि हटींदैन ॥ लड़ौंला...
अणुबमको शक्तिलाई तृण तुल्य गन्दै ।
विश्वव्यापी मानव संग नाता लगाउँदै ॥
'प्राणीमात्र जय !' भन्ने नारा घन्काउँदै ।
रूढ़िवाद, अज्ञतालाई भस्म बनाउँदै ॥ लड़ौंला...

——

# साहित्य-भास्कर आदिकवि प्रति–

नेपालीका अँध्यारा–हृदय बिचको ज्ञानको नेत्र खोली,
जानेबालो बतायौ कुपथतिरको अन्धतालाइ पोली,
नेपालीहुन् कुनाका अपढ़ बिचरा सभ्यता बाट दूर,
शिक्षाको नामसंमन् नबुझिकन नै बन्दथे दुष्ट क्रूर।

के हो ? साहित्य भन्ने यतित पर रहोस् आत्मभाषात केहो ?
भाषाको स्थानके हो ? यसतिर कहिले ध्यान राख्नू कहाँ हो ?
भन्थे "भाखा नपढ्नू बरु अपढ हुनू" आदिको के बखान ?
तोड्यौ त्यो भावना नै नव-[illegible] बुझिने यो गर्‍यौ बुद्धि दान,

अन्धाको नेत्र खोले सरि हुन गयो चेतना फैलँदैगो,
जागे धेरै सुतेका कविवरहरू अन्धता [illegible]सिंदैगो।
देख्यौं नेपाल शिक्षा प्रतिशत दसै युक्त यो देश हाम्रो,
यस्तै बाल्ने दियालो पनि सकलहो हे कवि ! श्रेय तिम्रो।

नेपालीका उज्याला कविवर ! तिमिहौ लोकका सूर्य जस्ता,
भानूका भक्त नै हौ तर उनि सरिछौ भक्त भै नाथ जस्ता
तोड्यौ कालो निशाझैं तिरमिर रहने राष्ट्रको अन्धकार,
जोड़यौ साहित्य नौलो युग युग रहने धन्य साहित्यकार !

गोठालाको धमीलो पनि हृदयमा भाव पस्ने गरेर,
सारा रामायणैको मथन गरि यो नौनि छोड्यौ झिकेर,
मात्रा-मात्रै बुझेका जनपनि सबै शास्त्रको तत्व सिक्छन्,
श्रद्धा औ भक्ति साथै सकल कविका स्तोत्रको पाठ गर्छन्।

आफ्नै साहित्यमा नै तसलिन कती मन्द आनन्द होला ?
आहा ! तिम्रो उज्यालो गुण नबुझ्ने मूर्ख को आज होला ?

तिम्रो नै श्रेय यो हो कति पछि थियो आज नेपाल जाग्यो,
तिम्रो नै प्रेरणा हो सकल जनको देशमा दृष्टि लाग्यो।
नेपालीका पताका गुरुवर ! तिमिहौ श्रेष्ठताका प्रतीक,
टाढ़ाछौ मृत्युले ता तर कृति हरूले बस्दछौहै नजीक।
तिम्रो यो शुभ्र-कीर्ती रवि-शशि तकनै फैलँदै मात्र जाला,
तिम्रो सद्बुद्धि देखी कविवर ! खुसिमा डूबने को न होला ?

---

## हाम्रो पानी

चौविस घण्टा रात र दिनमा अठार घण्टा घसिंदा छौं,
बाँकि समयमा पनि चिन्ताले गुन्द्रामा छटपटिंदा छौं।
कहिले खन्नू कहिले जोत्नू मशीन जस्तै चल्नू छ,
आधा पेटै सातु र आटो नून मिलाई निल्नू छ।
घेरो मात्रै टोपि छ शिरमा झुत्रे - झाम्रे कपड़ा छन्,
एकतले सानो झुपड़ी छ भुल्ला - थोत्रा त्यसमै छन्।
आगोवाल्दा भालु धुँवारे जस्तै सासै रोकिन्छ,
दलिनहरूमा पचासवाज़ी हिंड्दा थाप्लो ठोकिन्छ।
घसियों घसियो खेती गर्दा दस महीना तर पुग्दैन।
बनाइ खाऊँ तै पनि भन्दा नूनभुटनतक जुर्दैन।
मर्दा भन्दा अगाडि कहिले फुर्सद हाम्रो देखिन्न।
बाँध हजारौं हाल्छौं तर पनि ऋणको खोलो छेकिन्न।
कानभित्रको पर्दाखाने दिनदिन चर्को झाड़ा छ।
एउटा आपत् आज हिंड्यो तर भोली अर्को फेरि खडा छ।
मनमा बादल नेत्र दुवैमा तप्कि रहेका आँसु-झरी।
दुःख - दर्दको मेघ गर्जना बाह्रै महिना चक्र सरी।

'लाग्यो भोक र कपड़ा फाट्यो ! बोलि मुटूमा रोपिन्छ,
दरिद्रताको पर्वत उभिंदा धनको खोलो रोकिन्छ।
निंतो बाहेक ढुना र बौता बरिपरि देख्नू मुस्किल छ,
काम हजारौं गर्दा चाँडै पेट पछाड़ी खस्किन्छ।

सिकिस्त पर्दा लागो-बोक्सी भन्दा - भन्दै ज्यान तुरिन्छ,
शरीर के हो ? ख्यालै नगरी घामि - तमासा हेरिन्छ।
हरमौकामा भाग्यवादको झूटो ढोंग पिटाइन्छ,
काम अधूरो विफल बनेमा "लेखा" धोका ठोकिन्छ।

मनमा कहिले शान्ति भनेको थोपो तक पनि मिल्दैन,
जस्तो चञ्चल कमल - पत्रमा पानी पर्दा अड्दैन।
तै पनि हामी बलिया मोटा तगड़ा विद्या बुद्धि तिर,
कारण केहो थाह छ [illegible]? सुटुक्क मनले याद गर !

हावा - पानी शीतल हाम्रो मनमा राम्रो सन्तोष,
मध्य घाममा हिमाल हावा मिल्दा उठ्दछ [illegible] जोश।
चीसो पानी पिएर हिंड़दा पर्वत बोक्ने [illegible] हुने।
विचित्र ! मैले नेपालीको कथा अनौठो आज सुनें।

———

# कहिले देख्न पाउँला ?

राजा र रङ्कको छोरो एउटै लँङमा बसी,
कापी - कलम छोपेको कहिले देख्न पाउँला ?
केटा - देखि बुढा संम संपूर्ण विश्वमानव,
लेख्दँदा - पढँदा साथै कहिले देख्न पाउँला ?
बिरामी - हरूको रोग जाँचिएर यथार्थमा,
लागो - बोक्सी नमानेको कहिले देख्न पाउँला ?
गहना, कपड़ा, रूप - हरूको ममता भुली,
बन्दो मान्छे गुणग्राही कहिले देख्न पाउँला ?
'अछूत' नाम मेटेर शिक्षावर्गीय मानव,
भ्रातृत्व - भावना युक्त कहिले देख्न पाउँला ?
यो भाग्यवादको झूटो बकवाद् निमोठँदो,
उद्योगवादको 'सिंह' कहिले देख्न पाउँला ?
प्रमाण - पत्रकोलागी नलड़ी छात्रको गण,
ज्ञानकोलागि पढँदो कहिले देख्न पाउँला ?
प्राच्य-पाश्चात्यको माझ राम्रो सरल मार्गमा,
हिंडेको लोकको ताँत कहिले देख्न पाउँला ?
निस्की यौवनका चिह्न बिहेमा हँसिलो मुख,
दुलही घरमा जाँदी कहिले देख्न पाउँला ?
सारा मानवले मात्र दुइछाक मजासंग,
मुख हात जुटाएको कहि देख्न पाउँला ?
तिरेछ पाँचसौं व्याज पचास रुपियाँ ऋण,
अझैछ ऋण ! हा ! मुक्त कहिले देख्न पाउँला ?

ब्रह्मचारी बनी लोक शास्त्रीय विधिपूर्वक,
राम्रा सन्तान पाएको कहिले देख्न पाउँला ?
छुसे - सानातिना राष्ट्र संपूर्ण मेटिई कन,
विश्वको एउटा राज्य कहिले देख्न पाउँला ?
बुझी महत्व शिक्षाको जागँदो जनता तिर,
बढ्दो साहित्यको माग कहिले देख्न पाउँला ?
ढुङ्गा-मन्दिरको देव देह-मन्दिरमा बुझी,
आत्मज्ञानी हुँदो लोक कहिले देख्न पाउँला ?
छोड़ी विध्वंस सामग्री बोकेरशान्तिको ध्वजा,
स्वच्छ विज्ञान चंकेको कहिले देख्न पाउँला ?
जस्तो यो विश्वको चित्र सामुन्ने प्रष्ट देखियो,
त्यस्तै ब्रह्माण्डको चित्र कहिले देख्न पाउँला ?
यत्रो ब्रह्माण्डको भित्र म एक 'रेणु' हूँ भनि,
मान्छे घमण्ड रहित कहिले देख्न पाउँला ?
लड़ेको सुखको लागि समस्त दुनियाँ छयो,
परन्तु सुखले युक्त कहिले देख्न पाउँला ?
बिर्सी द्वेष गरीमाल छरेर रङ्ग औ फुल,
होली 'मानवता नाच' कहिले देख्न पाउँला ?

———

# नेपाली किन बिग्र्यो ?

( प्रचलित झ्याउरे लयमा )

नेपाली कङ्गाली किन भयो ? घिउबेची चुरोट उडायो ।
बालकले दूधमाग्दा गालो दिने फोरी,
वर्षा भरी घिउ सँगाल्यो आफु मरी मरी,
टीन भऱ्यो बेचिदियो पैसा कहाँ साथ, ?
चुरोटको खिल्लि लिई मुखमा लग्यो हात,
नेपाली कङ्गाली किनभयो ? स्वास्थ्य जति धूवाँमा उडायो ।
घिउ खाए बन्ने थियो हृष्ट-पुष्ट मोटो,
के गरौं ? बेचि दियो बुद्धि भयो छोटो,
साथल्यायो खपटे र टी० वि० हरू टंम,
बाँच्न पनि मुस्किल पऱ्यो चालिस वर्ष संम,
नेपाली कङ्गाली किन भयो ? बाह्रमासे जुवामा रमायो ।
घर आफ्नो काम कति ? असारको महिना,
खेत भरी काम - काज गर्नु कुनै छैन,
खेतबारी ठीक राखि सोह्र - भाइ साथ,
जोगि हुँदा बल्ल गयो पुर्पुरामा हात,
नेपाली कङ्गाली किन भयो ? स्त्रपिसी घैटोलाइ रसायो ।
गर्नुछैन कहिले पनि सामाजिक काम,
माग्नेलाइ दिनुछैन एक - आधा दाम,
इज्जेतको धाक देखाइ विहेगर्दा हेर,
गहना, कपड़ा, बन्दुक ठोक्दा ऋणलाग्यो धेर,

नेपाली कङ्गाली किनभयो ? मूर्खलाई विद्वान बनायो !

रोगिलाइ 'सन्निपात' लाँमा चामल गन्छ,
पँदेराको भूत खोज्छ बोकेपाठो भन्छ,
हाय ! हाय ! तड्पि-तड्पि रोगी मरीजान्छ,
"वोक्सिनीले छौंड़ा लगाइ" लाँमा चोखो हुन्छ,

नेपाली कङ्गाली किनभयो ? सत्यकुरा छोड़ेर नौलायो ।

बाबु - आमा कहिले मरी स्वर्ग पुगेकाछन् ,
वायु बनी, दुःख दिए छोरा-नाती भन्छन्,
कुखुरा र पाठा काट्छन् रूढ़ीवादी माथी,
दोष पाउँछ 'धर्मशास्त्र' चाल हेर साथी,

नेपाली कङ्गाली किन भयो ? रात्रि हिंड्ने आदत बसायो !

ब्रह्मचर्य महत्व त कता गयो कता ?
स्वास्थ्य गयो खाल्टामुनी तागत वेपता,
परस्त्रीको हाव देखि दङ्गपर्ने केटा,
भोलीविहान बाँध्नु पर्‍यो आपत्तिको फेटा,

नेपाली कंगाली किन भयो ? घिउदेची चुरोट उड़ायो ॥

---

# झगड़ा किन ?

( १ )

हामी मानवमात्रको घर ठुलो यो विश्व-संसार हो ।
खाली मानवता सबै मनुजको यो एउटै धर्म हो ॥
यत्रो जंघटमा विभिन्न ममता सानो कुरामा हुनन् ।
हाम्रो धर्म अगाडिमा उठिदिंदा संपूर्ण वैलाउनन् ॥

( २ )

हाम्रो हुन्छ युगानुरूप क्रमले सत्कार्यमा उन्नति ।
फेर्दै देखि लिएर आजतकमा आयौं अगाड़ी कति ॥
हाम्रा पूर्वज ती कती समयमा यस्ता सिंढीमा चढे ।
चढ्ने छन् पछि सम्म सन्ततिहरू यस्तै नया ढंगले ॥

( ३ )

हाम्रो लक्ष्यछ 'विश्वशान्ति' सबमा आलोक देखाउन ।
आएका झगड़ा अशान्तिहरूका दुष्कार्य तर्काउन ॥
यो राम्रो पथमा तँ फेरि म भनी सानो-ठुलो भावना ।
राख्ने कारणके ? अचम्म जब यो हो एउटै कामना ॥

( ४ )

हामी मानव हौं स्वतन्त्र भनिने हाम्रो ठुलो ज्ञात हो ।
यो प्यारो अधिकार हो र धन हो व्यापारको मूल हो ॥
यो हामी नमिले मरी-मरि पनी लिन्छौं खिएका थियौं ।
साम्नेमा इतिहास साक्षि छ बुझौं हेरौं अगाड़ी बढौं ॥

———

# परदेशीको चिठी !

प्राणप्यारा साथीहरुमा हृदयले गर्छु नमस्कार।
वारिपारिका मित्रहरुमा गर्दछु ढोग म बारंबार॥
बसिन्छ परदेशमा सखे! तरर आँसु चुहाउँदै।
जननीका परमस्नेहले विरहको गीत गाउँदै॥
मित्रहरूको समूह मेरा हृदयभित्रै बसेको छ।
तर त्यो देख्नमा अशक्य हा! मुटुक मेरो जलाउँछ॥
त्यो टाकुराको स्वच्छ हवाले मनको क्लेश उडाउँथ्यो।
त्यो जङ्गलका दृश्यले सदा भोक-प्यास हटाउँथ्यो॥
बन्धुबीचमा बसी [illegible] बोलने मन लागर्दछ।
तर केगरौं? तुच्छतायो नोकरबनी बस्नु पर्दछ॥
कहिले होला त्यसै मरेको प्राणलाइ बचाउने।
मातृप्रेमको हावभावले साथी-संगमा [illegible]उने॥
प्रिय बुद्धिमानी हे साथीहो! परदेशमा नआऊ।
जोमिल्छ घरमैं सहर्षले बाँड़ी-चुँडी प्राण बचाऊ॥
आफ्नोघरनै स्वर्ग रहेछ आटो अमृत नै।
अप्सरा-सरि गृहलक्ष्मीछन् बस्नेहो घरमैं॥
दुर्दैवको पुरेरफेला दुःख भोगन आइयो।
बनौं लाहुरे भनी हिंड़ेको म'दको रस पाइयो॥
आफ्नो दुःखले आफु हिंडेको दोष भनौं कसको।
नभ-उँद्दा पनि सुखै भएन गरीब भई घरको॥
प्राण धारमा राखी जान्छौं शत्रुहरूको बीचमा।
रक्तप्रवाहले भरिन्छ भूमि कसोरि फिर्छौंखै घरमा?॥

———

# केगरु छोरी ?

हृदय-घड़ाको सुधा पिलाई पालि-रहेकी हे छोरी ।
आँखा वरि-परि पुतली जस्तै नाचि-रहेकी हे छोरी ॥
हाँसी खेली अबतक मनको मयूरलाई खुसी गर्‍यौ ।
सुकीसकेको आशालाइ अंकुर जस्तो रूप दियौ ॥

बढ़ी रहेको जीवन-तरुमा झपक्क फुल्दो फूलबन्यौ ।
जलीरहेको शोक-अग्निमा शीतल जलको रूप बन्यौ ॥
घरकी बत्ती तुल्य बनी-बनी अन्धकारको नास गर्‍यौ ।
परन्तु विधिको खेलै यस्तो जानें छोड़ी आजभयौ ॥

मनयो मेरो साथ लग्यौ तिमि शरीर मात्रै छोड़ेर ।
बसन्त - ऋतुमा झपक्कफुल्दो फूलचटक्कै तोड़ेर ॥
मनले भन्दछ; प्यारी छोरी! कसोरि जाऊ भनूँभनी ।
परन्तु कालचलनछ यस्तो जानु पर्‍यो अब बाध्यबनी ॥

जाऊ! घरमा, इष्टमित्रमा मीठो बोली प्रेम गरे !
पतिको सासू स्वसुरहरूको ईश्वरसरिको मान गरे ।,
कुलकीबत्ती लच्छिलकी बनि हामीहरुको शोक हरे ।
कलङ्क कुलमा लाग्न नपाओस् प्रयत्न यहिनै नित्यगरे ॥

केगरुँ छोरी ? हामी आयौं यस्तै लाइति छोड़ेर ।
हृदय भित्रको प्रेम तन्तुको चटक्क बन्धन तोड़ेर ॥
"जुवाइँ! मैले गरें समर्पण-श्रद्धाले यो साथ लिनोस् ।
जन्म-जन्म तक प्रेमबढ़ाई जीवनलाइ फुलाउनोस् ॥"

---

# सबको प्यारो सुर्ती

सुर्त्तिलाइ 'श्रुति' भन्न सुहायो, जो प्रजाभर गुणी कहलायो।
बाल-वृद्ध सब मोहित पार्‍यो, शान्तिलाइ गरिजोड़ लघार्‍यो ॥

इन्द्रजाल लिइ जान्छ बजार, सुर्ति रूप हरू लिन्छ हजार।
जो दुकान घर छन् सबमानै, राज्यगर्दछ प्रजा भरमानै ॥

एक भन्दछ तमाखु म खान्न, लाग्छ दूर पुगि त्यो विड़ि तान्न।
हो तमाखु अति निर्घृणि जात, भन्छ सुर्ति अझ फेरि कुजात ॥

खानहुन्न विड़ित्यो खपटे हो, खान योग्य सिगरेट सफा हो।
प्रज्ञ-विज्ञ सबले यहि पिन्छन्, स्वागतार्थ सबले यहि दिन्छन् ॥

एक भन्दछ तमाखु छ ताजा, यो कियायत र हो अझ शोभा।
खोंकि रोक्छ अति नै रसिलो छ, बुद्धि दायक र पाचक योछ ॥

भन्छ दुःखद तमाखु छ अर्को, खर्च धेर गरने पनि त्यो हो।
रातमा जब पिने मनलाग्यो, कोइला नलि हुँका छ कन्या पो ॥

सुर्ति झैं छ सजिलो अरु के र ? पत्ति राख गरकाम सवेर।
सुर्ति फुर्ति, बल, तागत दिन्छ, हानि केहि यसबाट नहुन्छ ॥

यो महारिपु सदा धनकोछ, साथ संग्रह सबै जनकोछ।
प्रेमयुक्त सबको मनकोछ, सुर्ति साथ नलिने भनकोछ ? ॥

या धनी, गरिब, ठालुठुलो होस्, बाल, वृद्ध, दुनियाँ, नृपनै होस्।
जोगि, भोगि ठग, पण्डितनै होस्, सुर्तिवाट बँचने अवकोहोस् ॥

धन्य ! सुर्ति ! सबैको कति प्यारो, यो हुँदैछ नरलोक अँध्यारो।
मोहनाछ जनमा छरँदोछस्, होसचेत सबको हरँदोछस् ॥

भक्तलाइ दिइतुँवि रं झोली, स्वास्थ्य, बुद्धि बल तागत पोली।
माग्न, मन्र खुसि जा ! भनदोछन्, तैपनीतँ सबको प्रियनै छस् ॥

———

# जय नेपाल

पवित्र भूमण्डलको शिरस्थल, पीयूषले तुल्य मिठो सफाजल।
प्राकार छन् उत्तरमा हिमालय, प्रजाहरूलाइ गराइ निर्भय॥
संसार उद्धार गरौं भनीकन, रमेशको चित्त भयो कुनै दिन।
श्री गण्डकीको तटमा निवासभो, नेपालकोहोस् जयनित्यभन्नुभो॥
अधर्मनिर्मूलनकी महासति, यी गण्डकी सर्व प्रजाकि छन् गति।
धाखंड होस् विष्णु पुरै पुन्याउँछिन, नेपालको होस् जयनित्य भन्दछिन
रमेशनै बुद्ध बनेर पाल्नुभै, सद्ज्ञानको दीपक हातमा लिंदै।
समस्त भूमण्डल दीप्त गर्नुभो, नेपालको होस् जय नित्य भन्नुभो॥
तिम्रोछजो मस्तक यो हिमालय, त्यसमा चढ्यो तेन्जिंग पुत्र निर्भय।
संसार नै दङ्ग परेर टोलियो, नेपालको होस् जय नित्य भन्दियो॥
यता कविकोगणहर्षसाथमा, सिंगार तिम्रो गर्ने विचारमा॥
साहित्यका भूषण खोज गर्दछ, नेपालको होस् जय नित्य भन्दछ।
हजूरको दूधपिने जती जन, नामर्द अल्छी खल दंभ कोछन।
अनेक देशान्तरमा पुगी लडे, नेपालका वीर भनेर मानिए।
सुरम्यती रत्नसमान टाकुरा, अन्यायमा न्याय दिई हुने कुरा॥
प्रजाहरूका बिच एकताकन, देखी-सुनी दङ्ग हुँदैनको जन ?।
रत्नादिका नै गहना लगाउँछु, भनें, पनी अंब ! म खोज गर्दछु॥
शरीर तिम्रो झलमल्ल पारुँला, नेपाल भू-स्वर्ग सरी गराउँला।
सुपुत्रजा ! हेजननी ! तिमीकन, देखेरनै मुग्ध हुँदोछ यो मन॥
हामीमिली भाइ अगाडि बढ्दछौं, नेपालको होस् जयनित्य भन्दछौं

———

# न आ पुतली !

( शालिनी छन्दमा )

आधा हाम्रो जिन्दगी बत्ति नै हो, राम्रो बल्ने जात त्यस्को हुँदै हो ।
चाहे राजा रङ्क चाहे समान, देख्ने वाली बत्तिको हुन्छ जान ! ॥

कालो-मैलो लोकको फाल्नलाइ, ब्रह्माको यो सृष्टिको खेललाइ ।
राम्रो पार्ने बत्तिनै हो बलेको, पोलिन्छस् हा ! तैं रहेछैस् भुलेको ॥

कैयौं हाम्रा कामछन् गर्नलाइ, धप्पै तैंले बत्ति दिन्छस् निभाई ।
हाम्रो सारा कामनै ठप्प हुन्छ, तेरो आधा आँखनै पोलि दिन्छ ॥

तैंले राम्रो भाग्यले रूप पाइसै, बुट्टादीरी आँख राम्रा जुटाइस् ।
धेरै तैंले कामछन् गर्नलाइ, पोल्छस् जानी-जानिके कायलाइ ॥

राम्रो मात्रै चीज देखी हुँदैन, त्यस्मा भन् ! के मित्रता चाहिँदैन ?
जस्ले आफ्नो देहनै खाक पार्छ, त्यस्मा खाली मूर्ख विश्वास गर्छ ॥

राम्रो देख्दै होस सारा गुमाइस्, जानी-ज़ानी प्राणसंमन् उडाइस् ।
कस्तो तेरो बुद्धि खोटो रहेछ, रक्सी जस्तो के नशा पो पिएछ ? ॥

आफ्नो सारा लक्ष्य छोड़ेर जाँदा, कस्तो केहो ? ख्यालकेही नगर्दा ।
आफ्नै प्रेमी कालको दूत बन्छ, पक्ड़ी आफ्नो जालले बाँधि दिन्छ ॥

पढ्ने वेला पाठशाला न आई, नारी जस्ती बत्तिलाइ चिढाई ।
डढ्ने केटा झैं बनिस् हा ! हराम !, खेल्दा तेरो जीवनैभो विकाम ॥

—❀—

# नयाँ झल्को !

आज तिम्रो संझनाले मैलिएको चित्त यो,
साफ ऐना - तुल्य पार्‍यो रूप सच्चा देखियो ।
जो थिए कैयौं शताब्दी देखिका धब्बा हरू,
मेटिएती स्वच्छ अर्कै ज्योति राम्रो चंकियो ।

स्वार्थ आफ्नो पूर्त्ति गर्ने जो थिए दुर्भावना,
रात्रिलाई सूर्यले झैं संझनाले पोलिएं ।
झूठ सोच्ने कुप्रवृत्ति जो थियो यस छातिमा,
आज देखी दौड़ि-दौड़ी त्यो डराई भागिगो ।

रूढि जो जो वेप्रमाणी रङ्गमडिन्थे चित्तमा,
आजसारा दौड़िए ती चित्त साह्रै स्वच्छ भो ।
सम्झना जीवलाई गर्त्तमा गुल्टयाउने,
लुब्धताको जो जरोहो चट्ट आफै काटियो ।

मित्रलाइ रङ्कपारी आफु ठालू पल्टने,
षट्चरणको चालबाजी आज सारा नासियो ।
भित्र मैलो धेर राखी स्वच्छ बन्दै बाहिरी,
लोकलाई मैलपार्ने मैलता नै तोड़ियो ।

भाइ-भाइ बीच आफू उच्च ठान्ने भावना,
चूर्ण पारी दन्किएको अग्नि राथी होमियो ।
आज अर्कै काल आयो देश अर्कै देखियो,
भूत देखी राखिएको द्वेष ह्राम्रो तोडियो ।

झर्नलाग्यो अश्रुधारा पूर्वका त्यस - पापले,
आँसुमानै पाप फाल्यौं स्वच्छ आँखा देखियो ।

द्वेषसारा चूर्णपारी भाइभाइ सब मिल्यौं,
छैन केही भेदभाव 'बुद्धको युग' थालियो।
क्रान्तिको साम्राज्यछोड़ी शान्तिको सन्मार्गमा,
आज लाग्यो लोक सारा शान्ति-हावा फैलियो।
विश्वका हे अग्रगामी ! शान्तिका भण्डार हे, !
एक तिम्रो ज्योतिपर्दा चित्त हाम्रो पल्टियो।

---

## हेरेर मात्रै हिंड़ेस् !

( शार्दूल....मा )

त्यो सानो झुपड़ी थियो वरि-परी झाड़ी झपक्कै थियो,
सारा शून्य थियो जगत् त्यहिं कती एकान्त राम्रो थियो।
त्यो खाली परिवार एक, उसको नाता न कोही थियो,
यो सारा झगड़ा थिएन उसमा आफै तपस्वी थियो॥
होला मानव यो यता यति भनी को संझना गर्दथ्यो ?
आफ्नै जीवनको कुतूहल थियो आनन्द अर्कै थियो।
त्यो सानो नमुना बढ्यो र फिंजियो सर्वत्र संसारमा,
जो देखिन्छ अनेक वर्ण अहिले ओ रूप-आकारमा॥
यो तेरो इतिहास सत्य छ अघी हे विश्वका मानव !,
तेरो चाल भने विचित्र अहिले देखिन्छ अर्कै सब।
सारा मानव मात्र भाइ सरिनै हुन् होइनन् लौ वता ?
नाता यो सब आज ख्याल नगरी दौड़ीरहेछस् कता॥
'हाम्रो मानवता !' भनेर मुखको त्यो धाकले मात्रत,
डामाडोल हुने छ यो स्थिति सबै पर्ला पछी आपत।

यो तेरो जिउभित्र बर्कत हुँदै सारा सँभालिस् भने,
होला आशछ नत्र चोर-लुटुवा छन् वेसरी मन्कने ॥
जान्छु एक म चन्द्रमा तिर भनी आनन्द गर्दै गरोस्,
अर्काले धनको जमाइ धुकुती ससारलाई भुलोस् ॥
अर्को एक निरक्षरी पशुसरी कर्त्तव्यदेखी पर।
पेटै पूजन गर्न मुस्किल परी रोओस् कराओस् तर ॥
आफै सभ्य भनाउँदो तँ, उसको वास्ता नराखी कन,
छी छी ! दुर्दुर ! गर्दछस् उ विचरा भागोस् रुवाई मन।
कस्को दुवलता छ याद गरिनस् साम्ने अशिक्षा हुनु ?
फेरी सभ्य म हूँ भनेर तँ अझै बेकारमा दौड़नु ॥
एक्लै मात्र अगाड़ि संस्रु तँ पुगिस् भाई पछाड़ी रहे,
आफै चोर बनिस् अरू हक न भै टेवाल्टवाल्ति हेर्दै रहे।
भन्छस् खूब गरें विकाश म भनी हेर्दै नहेरी तल,
तेरो व्यर्थै छ ढोंग मानव ! सबै अन्यायको दुर्वल !
सारा मानव तुल्य शिक्षित वनुन् कर्त्तव्य आफ्नो बुझुन्,
ठाड़ो मार्ग हुँदा पछाड़ि तँ रहेस् निर्धक्क साथै हिंडुन्।
साराको जवहोस् बिकाश क्रमले तेरो पछी होस् तव,
भन्लास् बल्ल गरें विकाश 'म' भनी देखी ठुलो वैभव।
मेरो राष्ट्र र अन्य राष्ट्र भनिने दुर्भावना छोड्दै,
'सारा मानव मात्र भाइ' पहिलो नाता सदा संझँदै।
जो जो भूल भए तँबाट सब ती सोचेर मात्रै गएस्।
खाली धाक लगाइ मूर्ख नवनी हेरेर मात्रै हिंडेस्॥

---

# दर्प-दलन बुटी !

( शिखरिणी छन्दमा )

ठुटे - झुत्रे भोटो घरछ बुकुरो पानि चुहुने ।
भकारीमा छाति पिटि - पिटी मुसा हर्दम रुने ॥
महारोगी, दुव्लो घरणि भरिमाको गरीब जो ।
सदै बाँचूँ भन्थ्यो विधि नियम हो त्यो पनि हिंड्यो ॥

नयाँ ढल्के टोपी सुट - बुट उसैमा घड़ि पनि ।
अझै चस्मा, साथै दुलहि, घरको झकड़ बनी ॥
धुवाँ तान्दै सुन्दै खवर बसने जो युवक हो !
कहाँ मर्थें भन्थ्यो गतिकुन थियो त्यो पनि हिंड्यो ॥

छुटाई आमाको सँग अझ रुँदामा खुसिहुने ।
कठै ! सानो पाठो, अझ उ अति टाठो 'छि-न' भनी ॥
अहा ! घाँटी काटी, गफ अधिक छाँटी खुसी बनी ।
गरें केके ? भन्थ्यो तर सुति गयो हा ! त्यहि पनि ॥

दिंदै धोका रतौं दिन दुखि-असामी हरु कन ।
लिंदै ठेकी - वेठी गरि - गरि वखेड़ा प्रति दिन ॥
कमाएको पैसा अझ अति छुचो 'मखिचुस' जो ।
'क-लै' खाई वस्थ्यो तपति गरोस् के हिंड़िगयो ॥

खरानीले फुस्रो घर, जन बिना लट्ठि सँगमा ।
लटा लाँवा-लाँवा 'शिव-शिवे' यही मन्त्र मुखमा ॥
बसेको झाड़ीमा जगत परको 'जोगि' जुनहो ।
बचौं शंभो ! भन्थ्यो गति कुन थियो त्यो पनि हिंड्यो ॥

प्रजाको भै राजा हरविषयको शासन गरी
अनेकौं रानीका संग महलमा दिल्लगि गरि ॥
लिई सेना सारा जगतकन जित्ने पुरुष जो।
म नै मार्छु भन्यो तर उहि स्वयं लै ढलि गयो ॥

ठुलो, सानो, मानी, गरिब, र धनी फक्कड अनि
प्रजा, राजा, सेना, जडमति, तथा सज्जन पनि ।
कती गर्छन् सेखी नवुझिकन देखेर चलन ।
विधाताको खासै बुटिछ सबमा 'दर्पदलन' ॥

*

## आफै मान्छे बनौं !

शङ्करले खिन्न हुँदै भन्यो 'मेरा घर कामगर्ने मान्छे—
छैन, जसबाट मलाई आफ्ना कपड़ा आफै धुनुपर्दछ,
आफ्नो भोजन आफै बनाउनु र—
आफ्नो विस्तरा आफै पल्टाउनु पर्दछ ।
रमेशले मुखभरिको जवाफ दिंदै भन्यो—
वुद्धि भए तैंले भन्नु पर्ने 'मेरो शरीरमा तागत छैन'
तर भनिस् उल्लू मान्छे छैन ।
तेरो घरमा आफूलाई हेर्ने ऐना छैन ।
तेरो नाक कस्तो छ ? तैंलाइ थाहा छैन ।
जब तँ आफ्नो बाहुबलले सजिलै आफ्नो—
निर्वाह गर्न सक्छस् !
तब ! खोजिस् के ?
ठाड़ो मन्टो लाएर—
लौ भन् त ! तँ के मान्छे होइनस् ?

॥ समाप्त ॥

